# पद्मसम्भवको जीवनी तथा मुक्ति

# THE LIFE AND LIBERATION OF PADMASAMBHAVA



सम्पादक

मीन बहादुर शाक्य

# पद्मसम्भवको जीवनी तथा मुक्ति


## तारथाङ्ग टुल्कु

अंग्रेजीबाट अनुवादः
बौद्ध ग्रन्थ अनुवाद समिति

सम्पादकः
मीन बहादुर शाक्य





सिद्धि ईन्द्र स्मृति गुठी

पिम्बहाल, ललितपुर

ने.सं. १११९

बि.सं. २०५६ ई.सं. १९९९



༄༅། ཨོཾ་སྭ་སྟི་སིདྡྷཾ། སྲིད་ཞིའི་སྤྲོ་དཔལ་སྐྱབས་ཀུན་འདུས་པའི་རྗེ། །ཨོ་རྒྱན་མ་
ཧཱ་གུ་རུའི་ཡེ་ཤེས་གཅིག །རྣམ་འཕྲུལ་དཔག་ཡས་གདུལ་བྱའི་མོས་དབང་བཞིན།
།གང་འདུལ་མཚན་མཆོག་བརྒྱད་ཀྱི་མཛད་པར་འདུད། །ཤིན་ཏུ་སྙིགས་མ་ལྔ་ཡིས་
གཟིར་བའི་འགྲོར། །ཤེས་ནས་དད་པའི་ས་བོན་བསྐྱུན་སྐད་དུ། །བསྡུ་དེབས་འདི་
བཞིན་ཡོངས་ལ་སྤྱན་པ་ཡིས། །ལྷག་བསམ་བཟང་པོས་སྤེལ་བ་དགེ་གྱུར་ཅིག །ཅེས་
སྨིན་བདག་རྣམ་བུ་དུར་ཤཱཀྱས་བསྐུལ་ངོར་རིག་པ་འཛིན་པ་སངས་རྒྱས་རྡོ་རྗེས་སྦྱོར་ཚིག་ཏུ་བྲིས་པ་མཾ་ག་ལཾ།

Ven. Chatral samgye dorjee.



स्व. सिद्धि राज शाक्य
ने.स. १०३२ - ११०५



स्व. ईन्द्र कुमारी शाक्य
ने.स. १०३७ - ११९६

# पद्मसम्भवको जीवनी तथा मुक्ति

## विषयसूची

# दुई शब्द

द्वितीय बुद्ध नामले चिनिनु हुने गुरु पद्मसम्भवको जीवनी तथा उहाँका निमार्णकायहरुको वृत्तान्त प्रकाशन गर्न पाउँदा मलाई ठूलो हर्ष लागेको छ ।

यो पुस्तक मेरो बुवा आमाको सम्भनामा हालैमात्र स्थापित सिद्धि - ईन्द्र स्मृति गुठीको नाममा प्रकाशन गर्न लागिरहेको हो । यस प्रकाशनद्वारा पाठकवर्गमा पद्मसम्भवको बुद्धचर्याहरु अवगत हुनेछन् र त्यसको फलस्वरुप कसैले गुरु पद्मसम्भव तथा सद्धर्मप्रति श्रद्धा जागृत गर्न सकेमा मेरो यो सानो प्रयास सफल भएको ठान्दछु । यस पुण्यले दिवंगत पूज्य पिता सिद्धिराज शाक्य तथा माता ईन्द्रकुमारी शाक्य लगायत जगतप्राणी सवै बुद्धत्व लाभ गरुन् भनी प्रणिधान गर्दछु ।

बुद्धो भवेऽयं जगतो हिताय्

विनित

धर्मबहादुर शाक्य

ल.पु. पिम्बहाल

# पद्मसम्भवको जीवनी तथा मन्त्र

## भूमिका

*परिनिर्वाणमा प्रवेश गर्नलाग्नुहुँदा भगवान बुद्धले आफ्ना अनुयायीहरुलाई भन्नुभयो, "यो साँसारिक जीवन क्षणिक छ र विछोड अपरिहार्य छ । तर आजबाट आठ वर्षपछि उडियानाको उत्तर पश्चिम भूमिको निश्चल सरोवरको बीचबाट एक त्यस्तो महान व्यक्ति उत्पन्न हुनेछन् जो म भन्दा बुद्धिमान र शक्तिशाली हुनेछन् । कमल फूलको मध्यबाट जन्मने हुनाले उनी पद्मसम्भव नामले चिनिनेछ र समस्त प्राणीहरुलाइ दुःखबाट मुक्त गर्नका निमित्त गुह्य मन्त्रहरुको उपदेश प्रकाश गर्नेछन् ।*

**येशे छोग्याल**

आठौ शताब्दीका सुप्रसिद्ध मुनि तथा विद्वान पद्मसम्भव तिब्वतमा बौद्ध धर्मको इतिहाँस निर्माण कार्यमा महत्त्वपूर्ण तथा प्रमुख व्यक्तित्वको रुपमा देखापरे । करुणारुपी कमलको फुलबाट जन्मिई दोश्रो बुद्धको रुपमा प्रख्यात पद्मसम्भव यस लोकमा सारा प्राणीहरुलाई बोधिज्ञान प्रदान गर्नको लागि प्रवेश गरे । उनको जीवनकथामा उल्लेख भए अनुसार पद्मसम्भव अवलोकितेश्वर बोधिसत्त्वको चित्त, अमिताभबुद्धको वाक् र शाक्यमुनिबुद्धको कायको अभिव्यक्ति वा निर्माणकाय हुन् । दश दिशाका सर्वबुध्दहरु र भूत, वर्तमान र भविष्य त्रिकालका सवै बुद्धहरुको सार एउटै छन् र ती पद्मसम्भवमा एककृतरुपले विद्यमान छन् । जसरी बुद्धको उपदेश सवैका लागि समान छन् तर धर्म मार्गमा लागेका विभिन्न तहका मानिसहरुले त्यसलाई विभिन्न अर्थले बुझ्छन् बोध गर्छन् , त्यसरी नैं मुक्ति खोज्ने प्राणीहरुको ग्रहण क्षमताअनुसार पद्मसम्भव पनि विभिन्न किसिमले देखा पर्छन् ।

पद्मसम्भवको जीवनी [illegible] [illegible] तहहरुमा सञ्चालित छन् । उनको उत्पत्ति तथा जीवनचर्याका विभिन्न शृंखलाहरु रहस्यमा छोपिएका छन । तैपनि हामीलाई यो थाहा छ कि उनले यस पृथ्वीमा वज्रयानको एक महान ज्ञानपिपासु एवं एकिकरणकर्ताको रुपमा पदार्पण गरे । साँसारिक प्रकरणहरु जस्तै भाषा, तर्क, पृथ्वी विज्ञान, ललितकला यहांसम्म कि शिल्पकलामा पनि, पद्मसम्भव एक सच्चा विकसित महापुरुषको सारतत्त्व थिए । आफ्नो यात्रा दौरानमा उनले मनुष्य तथा अमनुष्य मार्गदर्शकहरुका उपदेशहरु पूर्णरुपले ग्रहण गरेका थिए । राग द्वेष र मोहरुपी राक्षसहरुलाई दमन गर्न कठोर दुष्करचर्या गरी थुप्रै अभिषेक र दर्शनहरु प्राप्त गरिसकेका थिए । र जव उनलाई तिब्वतमा आमन्त्रण गरियो त्यसबखत उनी नालन्दाका सर्वोच्च विद्वान तथा तान्त्रिक गुरुका रुपमा परिचित भईसकेका थिए । तिब्वतमा आइसकेपछि पनि उनले वाधा अर्चना त्यतिकै सहेर बसेनन् । वरु यसको सट्टा अकुशल धर्महरुका अनगिन्ती अभिव्यक्तिहरुलाई तत्क्षणै परिवर्तन गरिदिए । अल्प समयमै पद्मसम्भवले तिब्वती जनताको मानसपटलमा तान्त्रिक उपदेशहरु संरक्षित गरिदिए ।

शालिनतापूर्ण गौरव बोकेका पहाडी भेगहरुमा, पद्मसम्भवले असंख्य चपलतापूर्ण यक्षहरुसित सामना गर्नुपर्‍यो । ती यक्षहरु सम्पूर्ण तिब्वती जनताका चित्तका मानवरुपहरु थिए । एकैचोटि उनको सामना सनातन गुढ धारणाहरु, प्रतिकूल प्राकृतिक शक्तिहरु र क्रोधले चूर भएका प्रलयकारी जादुगरहरुसित भयो । तसर्थ, उनको [illegible] नै प्राचीन सुझबुझलाई नविनतमरुपले व्याख्या गरी कुशल तथा निष्कपट तरीकाद्वारा मनुष्य जीवनका सबैभन्दा गहिरो तथा सबभन्दा गुह्य पक्षलाई प्रदर्शन गरेर देखाउनु थियो । उनले तिब्वतमा पहिलेदेखि विद्यमान जादुमन्त्र र पिशाचजगतप्रतिको मोहलाई पनि वेवास्ता गर्न सक्दैनथे किनकी बौद्ध धर्ममा जहिलेपनि पिशाच वा दैवी रुपलाई हाम्रो आफ्नै चित्तका अभिव्यक्तिका रुपमा चिनिन्छन् । क्रोधी पिशाचहरुलाई शान्तदान्त पार्नु भनेकै हाम्रो आफ्नै मनलाई शान्त र विनित गर्नु हो । यसरी, हाम्रो धार्मिक प्रगतिको बाधालाई हटाउनु हो । त्यसैले कसैकसैलाई पद्मसम्भवले प्रदर्शन गर्नुभएको मायावी चर्या ऋद्धिबलको एक आडम्वरीपूर्ण प्रदर्शन जस्तो लाग्नसक्छ । तर, उनको ऋद्धि चर्या वास्तवमा भन्ने हो भने अर्कै कुनै चीजको द्योतक

थिया । ती भूतिया पिशाचहरुलाई सामना गर्न उनले तिनीहरुको आक्रमक प्रदर्शनलाई सशक्त धर्म ज्ञानमा परिणत गरिदिए । र उनीहरुको काँधमा सद्धर्म रक्षा तथा संरक्षण गर्ने उत्तरदायित्व सुम्पिनुदिए । त्यसरी नै उनको वचन र चर्याले तिव्वती जनताका मनमा भयका किरणहरु प्रस्फुटित हुन्थ्यो र उनीहरुमा आशाका लहरहरु पलाएर आउँथ्यो । उनले राजा र जनताहरुलाई आफूमा श्रद्धा प्रकट गर्ने एक नाटकीय अवसर प्रदान गरे । यसरी उनले तन्त्रका मोक्षदायी उपदेशहरु ग्रहण गर्न तयार पारिदिए । गुरुले देखाए कि जवसम्म तिव्वती मानिसहरुले आफ्नै मनभित्र सत्यको खोजी गर्दैनन् तवसम्म देशमा यातना फैलाउने यक्षहरु विरुद्ध तिनीहरु असहाय नै हुनेछन् ।

अन्धकारनाशक एवं बुद्धत्वको तत्काल अभिव्यक्ति दिने पुरुषको रुपमा गुरु रिम्पोछेले सबै प्राणीहरुको चेतनामा आफूलाई व्याप्त पारे । परिलक्षितरुपले पद्मसम्भवको जीवनीका श्रृँखलाहरुले बाह्य लोकका घटनाहरुको अनुभूतिहरु प्रकट गर्छन् । उदाहरणको रुपमा, कसैकसैलाई पद्मसम्भव, सदाछलकपटी आत्मलाई आफ्नो पैतालामुनि कुल्चिराखेको, तीनकोणे वज्रकिलाद्वारा कर्मको पाशोलाई काटिराखेको क्रोधी देवता दोर्जेद्रोलोको रुपमा देखापर्दछन् । कसैकसैलाई भने देदिप्यमान मण्डलको मूलदेवताको रुप, एक सर्वज्ञानी मित्र, शरण र आन्तरिक मार्गदर्शकका रुपमा पनि देखापर्छन् । आफैले सृजना गरेका अकुशलप्रवृत्तिरुपी राक्षस तथा हाम्रो व्यक्तिगत संस्कारप्रतिको प्रलोभनलाई वशमा पारी उनले सबै आत्मकेन्द्रित लक्ष्यहरुको दानवी रुपलाई छर्लङ्ग पार्छन् । चित्तको पूर्णरुपले शुद्ध रुपलाई अनावरण गरेर त्यसलाई जुनसुकैचीजपनि विना पूर्वाग्रह ग्रहण गर्न तत्पर पारिदिन्छन् । जीवनका हरेक अवस्था, जसको वाह्य रुप जस्तोसुकै भएपनि, सद्धर्मको एक शिक्षा सावित हुनसक्छ । उनको यो धारणा अकुशल धर्मका हरेक अभिव्यक्तिका सामु एक चुनौतिको रुपमा खडा हुन्छ ।

पद्मसम्भवको जीवनकथा पढ्दाखेरी कुनै कुनै घटनाहरु अस्पष्ट वा लाक्षणिक भाषाले भरिएको जस्तो लाग्न सक्छ । यसको कारण के हो भने सारगर्भित अर्थ मौनतावाट वोध हुन्छ जसको प्रभावले कुनै पनि मानिस भित्री ध्यानबाट आफ्नो चित्त ज्ञानको प्रमाणिकता मापण र परीक्षण

गन बाध्य हुन्छ ।

अझ भित्री तहवाट हेर्ने हो भने, पद्मसम्भवलाई हामीहरु जस्तो केवल पञ्चस्कन्धदेहयुक्त ऐतिहासिक मानवको रुपमा मात्र हेर्न मिल्दैन किनकी उनी साधारण मानव होइनन् । उनी एक ईन्द्रेणी जस्तै शुद्ध, पारदर्शी, अस्पृह तथा स्वच्छ छन् । उनी सर्वज्ञ एवं सर्वसुन्दर छन् – उनको चर्मका छिद्रबाट त्रिकाल बुद्धहरु चम्कदै प्रकट हुन्छन् । महामुद्राको जगतमा उनको सम्पूर्ण रुप नै एक शुद्ध प्रकाश हो । उनी करुणारुपी पद्मासन र साधकको हृदयमा रहेको अनुत्तर प्रज्ञारुपि सूर्यासनमा विराजमान छन् । यहाँबाट गुरुको प्रकाशमान चित्त जुन त्रिकायको मूर्तरुप हो आकाशका दश दिशामा सूर्यका किरणझैं व्याप्त हुन्छ : उनको दृष्टि सर्वव्यापी धर्मकाय, उनका चिन्तन सबै परिस्थितिसंग पूर्णरुपले मिल्ने संभोगकाय, र उनका सवै कार्यहरु संसारका परम स्वभावको अभिव्यक्ति (निर्माणकाय) हुन् । अकाल, अजरा, अमर, अनुत्पन्न, अप्रत्युत्पन्न, दुःखरहीत भई पद्मसम्भव विभिन्न कालहरुमा विभिन्न रुपहरुमा प्रकट हुन्छन् – यसपटक बज्रयान प्रचार गर्ने हेतुका रुपमा प्रकट भए ।

गुरु रिम्पोछेको विशुद्ध सार माथि निरन्तर र स्मृतियुक्त भावना गर्नाले सवै आत्मोत्कर्षी तृष्णाहरु, अकुशल गुणहरु र अनावश्यक मोहहरु नष्ट भएर जान्छन् जसले गर्दा प्राणीले हरेक परिस्थितिलाई यही जुनीमा बुद्धत्व प्राप्त गराउने माध्यमका रुपमा हेर्न सिक्छ । साधारणतवरले, चित्त विचलित तथा भ्रान्तिमय हुन्छ, तर जव यो भावनालाई उचितरुपले अभ्यासमा उतारिन्छ, प्राणीले देख्ने हरेक रुप पद्मसम्भवको कायमा परिणत हुन्छ, प्राणीले सुन्ने हरेक शव्द पद्मसम्भवको वाकमा परिणत हुन्छ, र सवै कार्यहरु पद्मसम्भवको चित्तमा परिणत हुन्छ ।

## जन्म

उडियान भूमिमा एक ईन्द्रभूति नाम गरेका राजा बस्थ्यो । उ एक करुणावान राजा थियो । उनले पूर्वकालमा स्वतन्त्ररुपले आफ्ना धन र आफ्नो आंखा समेत आफ्ना जनताहरुको कल्याणको लागि दान दिएका थिए । उनको एकलौटी पुत्र एवं उत्तराधिकारीको मृत्यु हुँदाखेरी उनलाई असह्य दुःख पीडा भयो र दुःखले छतपटिए । भूमिमा अनिकाल र खडेरी परेर हाहाकार

मच्चियो । राजकीय बुकुटी पनि सिद्धियो, र मानिसहरु अन्न र फूलहरु काच्चै खान बाध्य भए । आफूसंग भएभरका सम्पत्तिहरु चढाएर राजा र उनका प्रजाले बुद्धहरुको प्राथना गरे ।

अवलोकितेश्वरले यो सबै कुरा सुखावती भुवनबाट हेरिरहनुभएका थिए र उहाँले आदिबुद्ध अमिताभलाई ती जनताहरुका दुःखप्रति करुणायुक्त दृष्टि पुऱ्याउनको लागि अपील गर्नुभयो । अमिताभ बुद्धबाट सबै बुद्धहरु प्रकट हुन्छन् । तत्काले अमिताभ बुद्धको जिब्रोबाट एक रातो प्रकाशको किरण निस्क्यो । त्यो किरण उल्काझैं खसेर तल धनकोष सरोवरको बीचमा पस्यो जहाँबाट स्वस्फूर्तरुपले एक कमलको फूल फुल्यो । एकैसाथ, उहाँले आफ्नो हृदयबाट एक मन्त्र अक्षर *ह्री* प्रकट गरे । त्यो अक्षर एक स्वर्ण बज्रको आकृतिमा कमलको बीच भागमा खस्यो । त्यहाँ इन्द्रेणी प्रकाशको बादल अगाडि सबै बुद्धको सार समाहित भएको एक आठ बर्षे बालक विराजमान भएको देखियो । उक्त बालकलाई डाकिनीहरुले घेरिराखेका थिए । यसरी अत्यन्तै करुणामयी बुद्धको हृदयबाट पद्मसम्भव गुरु सारा प्राणीहरुको कल्याणार्थ यस लोकमा पदार्पण भयो ।



यसैबीच, बेदना र सतापले उद्विग्न भइरहेका ईन्द्रभूति आफ्नो ज्यानै जोखिपमा पारेरपनि जनताको सेवा गर्ने अठोट लिई समुद्रमुनि वास गरेका नागहरुबाट अद्‌भूत चिन्तामणि रत्न प्राप्त गर्नको लागि निस्के । अत्यन्तै जोखिमपूर्ण यात्रा गरी उनी सफलतापूर्वक त्यहाँ पुगे । नागहरुले उनलाई विभिन्न दूर्लभ पत्थरहरु चढाएर स्वागत गरे र आकाशदेवीले उक्त देदिप्यमान नीलरत्न अनावरण गरीन् । यो मंगलमय रत्नलाई सुरक्षितरुपले आफ्नो लुगाभित्र लुकाएर राजाले एक प्रणिधान गरे र उनको बायाँ अन्धो आखा तत्कालै खुल्यो ।

नागहरुको दरवारबाट फर्केपछि, राजाले धनाकोष सरोवर वरिपरि पञ्चवर्णीय ईन्द्रेणी झुमिरहेको देखे । त्यहाँ उनले एक भर्खरको बालक एक विशाल पद्‌मको आसनमा बसिरहेको देखे – जसको शरीर सूर्य जस्तो चम्किलो थियो । यो प्रकाशमान दृष्य कही सपना त होइन भनी सोंच्दै राजाले बालकलाई तिमी को हौ र कहाबाट आएका हौ भनी सोधे, र वालकले जवाफ दिए, "मेरा मातापिता छैनन्, तर म अमिताभ र अवलोकितेश्वरको उपहारको रुपमा आध्यात्मिक तवरले जन्मेको हुँ । (शाक्यमुनि) बुद्धले भविष्यवाणी गरे मुताविक म सवै प्राणीहरुलाई सहायता गर्न र भित्री मन्त्रहरुका धर्म प्रकट गर्न आएको हुँ ।" यो सुनेपछि राजाले आफ्नो दृष्टि पुन: प्राप्त गरे र हर्षोल्लासका साथ त्यस बालकलाई आफ्नै छोरोझै एवं उत्तराधिकारी मानी पद्‌म जुङ्ने (पद्‌मसम्भव) भन्ने नाम राखी सिंहासनमा राखिदिए । त्यसपछि, उडियान भूमिमा, समुद्रबाट वाष्प उत्पति भएर आकाशमा गइ बादलहरु बन्यो, जसबाट वर्षा बर्स्यो । पुष्पहरु फुल्न थाले र फलहरु पाक्न थाले ; जनताहरुको हृदयबाट सबै नैरास्यता र भय हटिएर गए ।

जव पद्‌मसम्भव बयस्क अवस्थामा पुगे, बुढो भइसकेका इन्द्रभूतिले पद्‌मको विवाह सिंहलका एउटी सुन्दर राजकुमारीसित गरिदिए र युवा राजकुमारलाई उडियानाको राजा पद्‌म ग्याल्पो (पदमराज) बनाइदिए । अति गोप्यरुपले राजाले पद्‌मलाई त्यो चिन्तामणिरत्न उपहारस्वरुप दिंदै भने, "यसले तिम्रा इच्छाहरु परिपूर्ति गर्नेछन् ।" तर राजकुमारले यस्तो जवाफ दिइ त्यो रत्न फर्काइदिए, "मैले देख्ने सबै चीज मेरो चिन्तामणि रत्न हो ।" र राजालाई आफ्नो हात खोली अगाडि फैलाउन आग्रह गरे,

तत्क्षणै उनले हातमा अर्को चिन्तामणि रत्न उत्पन्न गरिदिए ।

तर आफूले प्राप्त गरेको सांसारिक शक्तिको शिखर र भोगविलासले नै पद्‌मलाई तुरुन्तै सबै वस्तुको मायावत् तथा अतृप्त स्वभावलाई साक्षात्कार गर्नेतिर अग्रसर तुल्याए । (शाक्यमुनि) बुद्धको महाभिनिष्क्रमण स्मरण गरी, उनले आफ्नो गृह र नातागोता त्याग गर्ने निर्णय गरे र भने, "यस सांसारिक जीवन क्षणिक छ, संसारचर्या अनन्त छन्, र विछोड अपरिहार्य छ । यही नै लोकको नियम भएकोले म मोक्ष प्राप्ति गर्नेतर्फ आफ्नो मति स्थिर गर्छु ।" तर शीघ्रनै, के घटना घट्यो भने आफ्नो कर्मको प्रभावले, पद्‌मलाई मन्त्रीका पत्नी र असुर पुत्रको हत्याको लागि जिम्मेवार ठहऱ्याइए र सासांरिक सम्पति केही नदिइकन निर्वासित गरिदिए । तदोपरान्त उनले स्वतन्त्रपूर्वक एक योगीको जीवन अंगाले ।

## उपदेशहरुको खोज

भारतका आठ प्रख्यात शमसानहरुमा घुम्दै पद्‌मले अविक्षिप्तपूर्वक ध्यानको अभ्यास गरे । त्यसपछि, उनी बोधगया नजीकै रहेको शीतल चन्दन शमसानमा गए । लासहरुलाई आफ्नो आसनको रुपमा प्रयोग गरी उनी अति गम्भीर समाधिमा प्रवेश गरे र पाँच वर्षसम्म ध्यान नै गरिरहे । शान्त स्वभावका डाकिनीहरु उनीकहाँ आएर उनलाई थुप्रै अभिषेक तथा मौखिक उपदेशहरु दिएर जान्थे । खानाको लागि मृतकहरुलाई चढाउन ल्याइएका प्रसादहरु खान्थे, र वस्त्रको लागि लासहरुका कात्रो प्रयोग गर्थे । हरेक अष्ट शमसानमा उनले लोकपाल हेरुक (क्रोधी पुरुष देवता) हरु र बोधिगुह्य उपदेश धारी सिद्ध गुरुहरुबाट साधनाहरु प्राप्त गरे । त्यस्ता शमसानहरुमा कैयौं वर्ष ध्यान गर्दा गर्दै पद्‌म आकाशमा उडेर विभिन्न गति तथा लोकधातुहरुमा जान्थे र ती ठाउँहरुमा गएर गुह्य उपदेशहरुको लागि अनुरोध गर्थे । निरन्तर अभ्यासको फलस्वरुप उनले प्रकृतिका सबै परिवर्तनशील तथा विनाशकारी शक्तिहरुमाथि नियन्त्रण प्राप्त गरे र उनको नाम वज्रगुरु रहन गयो ।

त्यसपछि पद्‌मसम्भव बोधगया गए र आफ्नो शरीरबाट अरु शरीरहरु निकालेर बहुसंख्यक योगीहरुको समूह देखाए र त्यो दृष्य हेर्नेहरु भीडहरु सबै आश्चर्यचकित भए । जब मानिसहरुले पद्‌मलाई तपाई को र

तपाइं कुन गुरुको अनुयायी हुनुहुन्छ भनी सोधे, पद्मले जवाफ दिए, "मेरा गुरु छैनन्, म स्वयं उत्पन्न बुद्ध हुँ" तैपनि ती मानिसहरु र आउँदो पिढींको लागि धार्मिक मार्गदर्शनको खाँचो पर्नेछ भन्ने अनुभव गरी, पद्मले आफूलाई काय, वाक र चित्त का तीन योगहरुमा अभ्यस्त पारे र मानव र अमानव दुवै लोकहरुका गुरुहरुसित अध्ययन गरिनै रहे । किनभने उनले एक त्यस्तो धर्म पत्ता लगाउन चाहेका थिए जसलाई अति संक्षिप्त शब्दहरुमा व्याख्या गर्न सकियोस्, एक त्यस्तो धर्म जसलाई प्रयोग गर्नासाथै प्रभावकारी सावित होस्, जस्तो कि सूर्य जसरी सूर्योदय हुनासाथ त्यसले तुरुन्तै ताप र प्रकाश दिन्छ ।

पद्मावतीको देशमा यात्रा गरी, पद्मले भैषज्यकला पूर्णरुपले सिके, उनले रोगनिदान तथा असंख्य उपचार विधिहरु पनि सिके । रगल भूमिमा पद्मले एक बृढ, सेतो कपाल भएको सर्वमित्र नाम गरेका पुरुष लाई भेटे र उसलाई सोधे, "हे बृद्ध पुरुष ! तपाईको ज्ञान के हो ?" र बृद्ध पुरुषले जवाफ दियो, "भाषा र लेखन सिकाउनमा सूर्यमुनिको यस संसारमा मेरो जोड कोही पनि छैन ।" "त्यसोभए," पद्मले भने, "कृपया मलाई भाषा र लेखन सिकाइदिनुस् न " र यसरी पद्मले देवताहरुको भाषा संस्कृत, र अरु भाषाहरु गरी जम्मा ३६० वटा भाषाहरु र ६४ वटा लिपिहरु सिके । त्यसपछि उनले शिल्पविद्या र मृत्तिका शास्त्र पूर्णरुपले सिके र सबै कलाहरुमा निपुण भए । यस प्रकारले, आफूले मागेका सबै शिक्षाहरु प्राप्त गर्दै अगाडि बढे ।

आनन्दबाट उनले लिखित अभिलेखको रुपमा राखिएका सबै सूत्र तथा भाष्यहरुको वृतान्त प्राप्त गरे । बुद्धगुह्य बाट उनले महायोग तन्त्र प्राप्त गरे , श्री सिंहबाट महाहेरुक तन्त्रहरु प्राप्त गरे , गाराव दोर्जेबाट तन्त्रहरु मध्ये सर्वोच्च झोग्चेन (महासन्धि) का शिक्षाहरु प्राप्त गरे । अरु लोकहरुबाट बोधिसत्त्वहरु उनलाई भेट्न आउँथे । तसर्थ उनी सम्पूर्ण ज्योतिषविद्या, दर्शन, तर्क, भौतिकशास्त्र र सबै अरु लोकधातुहरुका संयुक्त ज्ञान का बारे ज्ञाता भए । उनको अर्को गुरु एक प्रव्रजित डाकिनी थिइन् जसले उनीसामु एकसय शान्त र क्रोधी देवताहरु प्रकट गरिदिइन् र उनलाई हूं अक्षरमा परिणत गरिदिइन् । अनि उनले पद्मलाई हयग्रीव मण्डलको अभिषेक दिई सबै विरोधी आध्यात्मिक तथा मानसिक शक्तिहरुमाथि

विजय प्राप्त गर्न समर्थ तुल्याइदिइन् । यसरी त्रिपिटकका बाह्य, भित्री र गुह्य परम्परा अभ्यास गरिसकेपछि र तन्त्रहरुका समय, व्याख्या, अभिषेक र दिक्षा लिइसकेपछि पद्म सबै विद्यमान ज्ञानको पूर्ण स्वामी बने । अमिताभ बुद्धको चित्तको निर्माणकायको रुपमा उत्पन्न भएका पद्मसम्भवसामु अनायास *सर्वबुद्धसमागममण्डल* देखापऱ्यो । बाह्यरुपमा पद्मसम्भव एक खैरोरङ्गको वस्त्र धारी भिक्षुको रुपमा देखापरे तर भित्रीरुपमा भने उनी अनुत्तर गुह्य मन्त्रका स्वामी थिए ।

त्यसपछि पद्मले दुष्करचर्या अभ्यास गरेर दिव्य दृष्टि, दिव्य श्रोत, दिव्य वेदना, दिव्य घ्राण, दिव्य जिव्हाका ऋद्धि प्राप्त गरे । दुष्कर चर्याले नैं उनलाई श्वासप्रश्वास नियन्त्रणमा विकास गर्न मद्दत गऱ्यो जसको फलस्वरुप उनले 'चण्डाली (अध्यात्मिक ताप)' प्राप्त गरे । पद्मले तान्त्रिक देवता महाकाल बास गरेको मसानमा यात्रा गरे । त्यहाँ दूर्लभ रत्नहरु जडित स्तूपमा आफ्नो पिठ्यूँ अडेस लगाएर, उनले डाकिनीहरुलाई महायान तथा बज्रयानका उपदेशहरु दिए । उनी अत्यन्तै टाढा टाढा सबै ठाउहरुमा यात्रा गरिसकेपछि, भारतमा उनी निमा ओजेर (सूर्यका किरण) र नेपालमा लोडेन छोग्से (सर्वलोकहरुमा ज्ञानको प्रचारक) नामले चिन्न थाले ।

## विश्व भ्रमण

पद्म त्यसपछि साहोरभूमिमा गएर त्यहाँका राजाकी छोरी राजकुमारी माण्डारवालाई धर्म उपदेश दिए र मन्त्रयानको शिक्षा दिए । तर, मानिसहरुले एक भिक्षु स्त्रीसित विहार गर्दैछ भन्ने गलत अफवाहहरु फैलाउदै हिंडे र यो कुरा राजालाई पनि सुनाइयो । राजा रिसले चूर भएर आफ्नी छोरीलाई काँढैकाँढा भएको खाडलमा थुनेर राख्यो र पद्मलाई जिउदै जलाउन लगायो । तर सबै प्राकृतिक शक्तिहरु आफ्नो पूर्ण नियन्त्रणमा पार्न सक्ने शक्ति भएको हुँदा पद्मले आफ्नो चितालाई प्रज्वलित खाडल वरिपरि एक विशाल सरोवरमा परिणत गरिदिए । सरोवरको बीचमा हस्तदन्त पत्रदलहरु भएको कमलले आठवर्षीय बालकलाई टेवा दिइराखेको थियो । त्यस बालकको पारदर्शी शरीर सामुद्रिक शंखहरुको वैजनीरंगले चम्किरहेको थियो । आँखा मिच्दै राजाले माथि हेर्दा सम्पूर्ण आकाश नै ईन्द्रेणी रङ्गको प्रकाशले भरिएको

देख्यो । र आफ्नो गल्तीप्रति पछुतो गरी पद्मलाइ सिँहासन चढाध्यो र उनको नाम पद्मसम्भव राखिदियो ।

अनि त्यसपछि पद्मसम्भव र माण्डरवा एउटा गुफामा ध्यान गरिरहेका बेला अमितायु बुद्ध उनीहरुको स्वप्नमा आउनुभयो । अपरिमित आयुको पात्र उनीहरुको शीरमा राखेर उनीहरुको शरीर देदिप्यमान पारि दिनुभयो र त्यसवेलादेखि –बुद्धहरुको अमर सार– रोग, व्याधि र मृत्युले नछुने पारिदिनुभयो । त्यसपछि उहाँले क्रोधी देवताको मण्डल बनाएर धर्म र चर्याको प्रभावकारी उपायहरु प्रदर्शन गरेर देखाउनुभयो जसले गर्दा प्राणी क्रमवद्धरुपले निर्वाणसम्म पुग्न सक्नेछ ।

त्यसपछि, हिरा झैं दागरहित भएर गुरु उनको जन्मभूमि उडियानमा फर्की जनतासामु आफ्नो स्त्री अनुयायीका साथ भिक्षा माग्दै हिँडे । तर शाही मन्त्रीहरुले उनलाई चिने र यस्तो कुरा गरे, "यो पूर्व राजकुमार हो जसले आफ्नी पत्नी त्यागेका थिए र मन्त्रीको छोरालाई हत्या गरिदिएका थिए । अब फेरी उसले यस देशमा के विजोग गर्ने होला ?, उसको उद्देश्य राम्रो काम गर्ने होइन वरु अपराध गर्ने हो ।" यसमा सबै मन्त्रीहरु सहमत



भए । तसर्थ भारीका भारी चन्दन काठ र अत्यन्तै ठूलो परिमाणमा तेल संग्रह गरे र पद्म र माण्डरवालाई जलाईदिए । तर एक्काइस दिनसम्म पनि चिताबाट धुवा निस्किनै रह्यो । मन्त्रीहरुसहित राजा त्यो स्थलमा पुग्यो र राजाले त्यहाँ एक विशाल सरोवर देख्यो । पद्मसम्भव र माण्डरवा सरोवरको बीचमा फुलिरहेको कमलपुष्पमाथि नृत्य गरिराखेको दृष्य पनि उसले देख्यो । त्यो कमल वरिपरि ईन्द्रेणीका किरणहरु थिए । अति विनित तवरले उडियानका राजाले आशीष र उपदेशको लागि आग्रह गऱ्यो र पद्मले उत्तर दिए, "त्रिलोकधातु एक कारागार सरह हो । तपाई एक बुद्धिमान राजा हुनुभएतापनि र तपाईसित हरेक भौतिक सुख भएतापनि, तपाई भौतिक र कामोत्पन्न तृष्णाहरुबाट उम्कन सक्नुहुन्न जसले गर्दा तपाईलाई नैरास्यता र दु:ख हुनेछ । तर अनित्य र मृत्यु अवश्यंभावीताको ज्ञानले तपाईलाई यो दूर्लभ जीवनको कदर गर्न, सांसारिक मायाहरु त्यागनतर्फ अग्रसर तुल्याउँछ र तपाईको मनलाई वशमा पार्न सिकाउंछ ।" यति भनेपछि पद्म दोर्जे द्रोलो (सर्वप्राणीहरुको शाश्वत सुखप्रदायक) नामबाट चिनिए र उनी जनताहरुलाई वाह्य, भित्री र गुह्य मन्त्रको शिक्षा दिँदै उडियानमा तेन्ह वर्षसम्म रहे । कतिपय यी जनताहरु सफल साधक बने र पछि कुनैपनि भौतिक अस्तित्व नछाडि जाज्वल्यमान ईन्द्रेणी प्रकाशमा उनीहरु निर्वाण भएर गए ।

पद्मसम्भवले भारत तथा नेपालभरी मन्त्रयानका उपदेशहरु दिँदै यात्रा गरे । उनले यस विश्वभरी र सुगतिहरुमा पनि यात्रा गरे । दक्षिण भारत र श्रीलंका, इन्डोनेशिया, बर्मा, मध्य एशिया, चीनका प्रान्तहरु, रुस, अफगानिस्तान, पर्सिया, इजिप्ट, र अरु विभिन्न गुह्य भूमिहरु जस्तै सम्भला र सुमेरु तथा अरु कैयन भूमिहरु मा यात्रा गरे । ती सबै भूमिहरुमा, उनले भयंकर पहाडका देवताहरु, असभ्य जंगली मांसाहारी प्रेतपिशाचहरु, महामारी फैलाउने राक्षसहरुलाई दमन गरे । सबै अन्धकार ग्रह शक्तिहरुका लागि उनले धर्मको शान्त प्रभाव ल्याए । र मानसिक पीडा, मनको अस्थिरता, र श्रद्धाहीनताले ग्रस्त प्राणीहरुका भ्रान्ति, असन्तोष, नैराश्यता र अकुशलता का कारण तथा अभिव्यक्तिहरु सबै निवारण गरे र समता विकास गराए ।

दक्षिणपूर्वीय एशियामा, तामारङ्को जाङ्लिङ भूमिमा, एकजना तिर्थीक (अबौद्ध) राजाले उनलाई बाँधेर नदीमा फ्याक्न लगाए । तर पद्म

हावामा नृत्य गरी आकाशमा उडेर गए र शासक र उसका प्रजालाई परिवर्तन गरिदिए । यसरी उनी बज्र गरुड को नामले चिनिए । अर्को तीर्थिकले उनलाई धर्म उपदेश दिनबाट रोक्न विष खुवाए तर श्रद्धेय गुरुले उनको शरीरमा भएको उक्त विषलाई सर्वाधिक शुद्ध प्रकाशमा परिणत गरिदिए ।

एकपल्ट, प्रख्यात बौद्ध विश्वविद्यालय नालन्दा महाविहारमा, तीर्थिक धर्मका अति शक्तिशाली व्याख्याकारहरुले बौद्ध विद्वानहरुलाई दर्शन सम्वन्धी शास्त्रार्थ गर्नको लागि चुनौति दिए, अनि बौद्ध विद्वानहरुले एकआपसमा कुरा गरे, "हामीले तिनीहरुलाई वादविवादमा हराउन सकेतापनि, तिनीहरुको गुह्य शक्तिमाथि विजय पाउन सक्दैनौ ।" अत: अनेक प्रार्थना तथा पूजा चढाएर ती बौद्ध विद्वानहरुले पद्मसम्भवलाई आमन्त्रण गरे । भोलिपल्ट विहानसवेरै, एक महापंक्षीसरह रुखका हाँगाहरुबाट तल ओर्लीइ पद्म दरवारमा आइपुगे, र उनी जस्तै देखिने चार व्यक्तिहरुलाई प्रकट गरे जवकी उनी आफै ध्यानमा लीन भई बसिरहेका थिए । शीघ्र नै द्वैततापूर्ण वादविवादलाई चुनौती दिंदै उनले आफ्ना प्रतिपक्षहरुलाई आफ्नै दृष्टिमा शंका गर्न बाध्य तुल्याए । अर्को प्रतियोगितामा, तीर्थिकहरुले चमत्कारीपूर्वक आगोको लप्काहरु उत्पन्न गरे । त्यसवेला पद्मले भूइमा छोए । त्यतिखेरै एक कमल फूल उत्पन्न भयो, कमलफूलको परागबाट एक सूर्यजत्तिकै प्रज्वलित बलिरहेको आगोको चक्र उत्पन्न भयो, त्यो चक्र घुम्दै घुम्दै माथि आकाशमा गएर अदृश्य भयो । अत: बुद्धधर्मको अनुत्तर स्वभावसम्वन्धी विचिकित्साहरु निवारण गरेको हुनाले उनी सेङ्गे ड्रा डोग (ज्ञानको सिंहगुरु) नामले चिनिए ।

पद्मसम्भव नेपालमा पनि आए जहाँ त्यसवेला अनेक प्राकृतिक प्रकोप – भूकम्प, आधीवेरी, इत्यादिले भूमिलाई अस्तव्यस्त पारिराखेको थियो र पशु र अन्नबाली दुवैलाई क्षति पुऱ्याइराखेको थियो । याङ्ग ले शोड गुफामा ध्यान गर्दा गर्दै उनले बज्रकिला (दोर्जे फुर्बु) को भयंकर क्रोधी रुप धारण गरे र उनको समाधिको तीव्रताले गर्दा उनले आठ विभिन्न समूहका विरोधी र प्रतिकूल शक्तिहरुलाई नेपालमा धर्मको रक्षा गर्न प्रतिबद्ध तुल्याए । आफ्नो चर्याबाट पद्मले भ्रान्तिका आवरणयुक्त शक्तिहरुलाई शान्तिपूर्ण जीवनको प्रवाहमा परिवर्तन गरिदिए र सवै बुद्धहरुको एकता तथा करुणालाई नमुना बनी देखाइदिए ।

**बोधिसत्व उपाध्यायको परामर्श**

मनुष्यलाई परिपक्व पार्ने कार्यलाई तीन बोधिसत्त्वहरु जसलाई त्रिकुलदेव भनिन्छन् द्वारा मार्गदर्शित छन् । ती हुन् प्रज्ञादेव मञ्जुश्री, करुणादेव अवलोकितेश्वर, ऋद्धिदेव वज्रपाणी । तिब्बती पठारमा बौद्धधर्म पुऱ्याउन ती देवहरु तीन प्रारम्भिक राजाहरुका रुपमा देखापरे । अवलोकितेश्वरले श्रोङ्ग चङ्ग गम्पो, तिब्बतका प्रथम राजाको रुपमा आफूलाई प्रकट गरे । श्रोङ्ग चङ्ग गम्पो को दुइजना पत्नी एक चिनिया र अर्की नेपाली करुणामयी ताराका निर्माणकायहरु थिइन् । बोधिसत्त्व मञ्जुश्री राजा ठ्रि सोङ्ग दे छेन र बज्रपाणी राजा राल्पाचेनको रुपमा प्रकट भए । ठ्रि सोङ्ग दे छेन आफ्नो अधिराज्यमा बौद्धधर्म प्रचार गर्न अत्यन्तै उत्सुक भई भारतवर्षबाट प्रकाण्ड विद्वान र भद्र बोधिसत्त्व शान्तरक्षितलाई आमन्त्रण गरे । साम्ये को स्वयं उत्पन्न मन्दिर उनको निर्देशनमा निर्माण गराउन लगाए । एक मंगलमय विहान, राजा सेतोवस्त्र पहिरिएर लेपनहरुद्वारा प्रलेपित गरिएको कोदालो लिई साम्ये मन्दिरको लागि एक हात जति गहिराईमा खाल्डो खने, त्यसपछि तीन तेलहरु रातो, पहेलो र सेतो जमीनबाट निस्के । ती तेलहरु लिई उनले आफ्नो अनुहारमा लगाए र शीरमा दलेर प्रमुदितभइ हिमभूमिमा बुद्धधर्मको आगमनको घोषणा गरे । यसरी साम्ये गुम्वाको भवनका लागि शिलान्यास गरियो ।

बोन्पो धर्मका पुरोहित तथा झांक्रीहरुलाई भने आफ्नो आधिपत्यसहितको सामाजिक मर्यादा वा सांस्कृतिक सम्पदा त्याग्ने इच्छा थिएन । तिनीहरुले कडाइका साथ नया र बेग्लै खालको धर्मको प्रवेशमा अवरोध खडा गरेका थिए । तिनीहरुले क्रोधी नागहरुलाई बोलाए । ती नागहरुले दिनमा जे जति निर्माण गरिएको थियो ती सबै एकै रातमा ध्वस्त पार्थे, माटा तथा पत्थरहरु जहाँबाट ल्याइएका थिए त्यही लग्थे । यदि शान्तरक्षित तिब्बतमा रह्यो भने सामाजिक उपद्रोह र अस्तव्यस्तता फैलिने छन् भन्ने महसुस गरी ठ्रि सोङ्ग दे छेनले उनलाई नचाहेरै पनि तिब्बत छोड्नको लागि आग्रह गर्न बाध्य भए । तर उपाध्यायले भने, "मैले बोधिसत्वको भावलाई पूर्ण गर्ने कोशिस गरेको थिए । यदि शान्तिले विजय पाउन सक्दैन भने हामी त्यस्तो व्यक्तिमाथि निर्भर हुनुपर्छ जो पञ्च ज्ञानमा विज्ञ छन् र जसका सामु सबै नकारात्मक शक्तिहरु काँप्छन् र शक्तिहीन

हुन्छन् । यस बखत, उडियानका प्रकाण्ड विद्वान पद्मसम्भव बोधगया नजिकै बस्नुहुन्छ । यदि तपाईहरुले उहाँ त्रिकालबुद्धका निर्माणकायलाई तिब्बतमा आमन्त्रण गर्नुभयो भने तिब्बती जनताहरुको लागि तपाईका सारा आशाहरुले मूर्तरुप लिनेछन् ।"

## पद्मसम्भवलाई तिब्बतमा निमन्त्रणा

सिद्धिराज, भारतमा यात्रा गरिसकेपछि राजा ठ्रि सोङ्ग दे छेनकहाँ यो समाचार लिएर पुगे, "भारत भूमिमा पण्डितहरुको भीड असंख्य ताराहरुको समूह जस्तै छ । उहांहरुमध्ये सवैभन्दा राम्रो सावित हुनुभएका गुरु पद्मसम्भव हुनुहुन्छ । उहाँ उच्चपत्रेचट्टान पर्वतका गुफामा विराजमान हुनुहुन्छ । आमाबावुबाट नजन्मिइ उपपादुक तवरले जन्मिनुभएका पद्मसम्भव एक प्रख्यात निर्माणकाय हुनुहुन्छ ।" यस्ता वचमहरु सुनी राजा अत्यन्तै प्रशन्न भए र उनले तीनजना दूतहरुलाई पठाए । स्वा उपत्यकाका खी जीर, मार धर्षणबज्र, चीम बंशका शाक्यप्रभ र सैन्यप्रमुख यश सिंह यी चारैजनालाई उनले बोधगयामा सुनका चूर्ण तथा सुनका पात्रहरु दिएर पठाए ।

ती चार लोचावाहरु (अनुवादक) भारतीय समतल भूमि पार गरेर गए । राजा सूर्यलाई उनीहरुले सुनको धूलोका केही परिमाण, एउटा स्वर्ण पात्र र एउटा सन्देश टक्र्याए ; महा आधिकारिक पण्डितलाई केही परिमाण सुनको धूलो दिए ; उडियानका पद्मलाई केही परिमाण सुनको धूलो र एक स्वर्ण पात्र दिए । महागुरुले अति कृपापूर्वक शाही उपहारलाई स्वीकार गरे । अनि दूतहरुले भने: "तिब्बतका राजा ठ्रि सोङ्ग दे छेनले श्रद्धाको लागि एक भवन, ध्यानको गुम्वा निर्माण गर्ने निर्णय गर्नुभएको थियो तर यक्षहरुले उहाँलाई विघ्न वाधा पुऱ्याइराखेका छन् । हामी उक्त कृपायुक्त माटोलाई अभिषिक्त पार्न, बुद्धधर्मलाई सुरक्षा र संरक्षण गर्नको लागि तपाईलाई आमन्त्रण गर्छौं ; हामी तपाईलाई यसप्रति उत्सुकता देखाउन आग्रह गर्छौं ।" उडियानका महामुनिले यस अनुरोधलाई बडो कृपालुभावले हेरे र पृथ्वी–पुरुष–बाघ–वर्षमा, शीतकालको मध्यचन्द्रका पन्ध्रौ दिनमा, उनी उच्चपदस्थ व्यक्तिहरुको हस्ताक्षर लिई आफ्नो यात्रामा गए । पूर्णिमाको दिन उनी नेपाल पुगे । अनि पद्म उडियानाचार्यले भने: "परिवर्तन, दमन गर्ने कार्य सम्पादन गरेर अन्ततोगत्वा म आइपुगे । जरायुजवाट जन्मेका

यक्षहरु शान्तसग रहनैपर्छ । तपाई लोचावाहरु अगाडि बढ्नुहोस् ।" र यसरी उनले तिनीहरुलाई सुरक्षाको आशीष दिएर अगाडि नै पठाइदिए ।

उडियान महामुनिले नेपालमा तीन महिना विताए । नेपाली वसुधर र अनेक नेपाली मानिसहरुलाई उपदेशहरु दिइसकेपछि उनले एकार विहारमा एक निधि तेर्मा लुकाए । त्यसपछि याङ्ग ले शोडको गुफा, असुर गुफा र अरु गुफाहरुमा, साँखुको विहारमा र अरु नेपाली विहारहरुमा, शक्तिशाली माटो नामक खण्डहरमा, र अरु कैयन घुमन्ते इलाकाहरुमा उनले तेर्माहरु लुकाए । प्रथम ग्रीष्मकालीन चन्द्रको पहिलो दिनमा आफ्नो यात्रा जारी राख्ने निधो गरिसकेपछि उनले भारत तथा नेपालका रुखहरुको शिखर तिव्वततिर झुकिरहेको, तिव्वततर्फ मुख परेका फूलहरु फुलेर विकसित भएको, भारत र नेपालका पण्डितहरुले सपनाहरुलाई रहस्यमय संकेत सूचकको रुपमा हेरेको, तिव्वतमा सूर्य र चन्द्र एकैसाथ उदाएको, भारतको धर्म सम्पूर्णरुपले तिव्वतमा प्रसारित भएको र त्यस असभ्य क्षेत्र नवीनतमरुपले गुम्वा विहारहरुद्वारा सजिएको सपना देखे ।



यो देखेर सबै चतुपरिषद डाकिनीहरु अत्यन्तै चिच्याउदै कराए:
"गुरु तिब्बतको लागि प्रस्थान गर्दै हुनुहुन्छ । यस्तो निर्णय स्थगित गर्नुहोस् !
बज्रगुरु, मतिनिधिवान, रुखका शिखरलाई उपदेश दिनु के त्यो उपाय हो ?
पुष्पदल के त्यसको दक्षिण हुन्छ ?
पण्डितहरुका दुस्वप्न के त्यो उपाय हो ?
एकपल्ट श्रीमण्डल गयो भने फेरी त्यही चक्रमा तुरुन्तै फस्नेछ ।
गुरु जादैहुनुहुन्छ । अट्टल, अचल आकाश छोडेर गए सरह भयो ।
चतुर्महाभूतको अचिन्त्य रुप हुनुभएका गुरु जाँदै हुनुहुन्छ, रहनुहुन्न ।
प्राणीहरुलाई स्वस्फूर्त कल्याण प्रदान गर्नको लागि
हामी गुरुलाई नजानको र यही रहनको लागि आग्रह गर्छौं ।"

यसरी तिनीहरुले हठ गरे । गुरुले उत्तर दिए:
"हे षडयन्त्रकारी डाकिनीहरु ! मेरो कुरा सुन ।
गर्मी यामको कारणले फलहरु रसले फुल्छन् ।
विनयजनहरुको आग्रह सुनी दया जागृत हुन्छ ।
कर्मको नियम देखेपछि, यहाँ रोक्ने मेरो समय छैन ।
गरुड आफ्ना पखेटाहरु फैलाएर आकाशमा उडिरहेको छ ।
मेरो लागि, लाभ र सुख भनेका चीज त अतीतका अलंकार मात्र हुन् ।
अरुलाई निष्पक्षरुपले कल्याण गर्ने समय आएको छ ।
माता तथा दिदी डाकिनीहरु, धर्मले तपाईहरुको साथ देउन् ।"

यति भनिसकेपछि, उनी माङ्ग युल (तिब्बतको सीमाना) मा आइपुग्छन् ।
त्यहाँ नेपाली महिला शाक्यदेवीको उपस्थितिमा उनले भविष्यवाणी गरे:
दुइ शयभन्दा बढी पुस्ताहरु पछि पुराङ्ग र माङ्गयुल प्रान्तमा एक त्रिसहयोग
नामक राजा तिमीहरुकै सन्तानहरुमध्येबाट आउनेछ ।
काश्मिरमा, तुर्किस्तानका तीन आर्यबन्धुहरु प्रशिद्ध हुनेछन्।
नेपालमा एकार विहारको नेपथ्यबाट उडियानको प्रलुप्त सद्धर्म अनावरण
हुनेछ ।
लाडलार शहरमा पुण्य र ख्याति नामक विहार प्रकट हुनेछ ।
यदि गरीव जनताले धर्मको लागि शरीर र ज्यान अर्पण गर्छ भन्ने उनीहरु

एक ठोस खम्बा सावित हुनेछन् ।" यसरी उनले भविष्यवाणी गरे र शाक्यदेवी नेपाली महिला संसारलाई परिवर्तन गर्ने गुरु माथि आफ्नो श्रद्धा स्थापित गरे ।

विनयजनहरूलाई चर्याको बलले विनित गर्ने वेला आइसकेको छ भन्ने कुरो उडियानका महापुरुषले दिव्यदृष्टिद्वारा जानिसके र उनी नेपालको निमाखुद सरोवरमा गए । त्यहाँ उनले सातजना शाही दूतहरु भेटे । तिनीहरु उनलाई एकचोटि फेरी प्रार्थना गर्न आएका थिए । आकाशगर्भले ती दूतहरुको नेतृत्व गरेका थिए । उनको साथमा डाव माङ्ग, देवभुवनका देवताहरुबाट आकीर्ण प्रकाशका सिंह, डावका एकजना मानिस, खु जिङ्ग, कोग्रोबाट एकजना, आर्योपायका प्रतिपालक, नानाम बंशका मारघर्षण, साका पुत्रासी र अन्तमा बाघको अनुहार हेर्ने नामक मन्त्री।

"उनले माङ्गयुल (कुटी) लाई दमन गरे , त्यो कसरी सम्भव छ ? उनको खोजमा सवैथोक व्याप्त छन्, उनले परमसत्य प्रतिवेक्षण गर्छन् । धर्मको माध्यमले उनले प्रमुदिता अभिवृद्धि गराउने पर्व गराउँछन् । उनको आशीषले मानिसको मनभित्र आशाको बीजारोपण हुन्छ । उनैले गर्दा नैं मनुष्यजातिले धर्म अनुशरण गरिरहेका छन् ।" यसरी कुराकानी गर्दै, वेरिएको सन्देश पत्र, सूनको धूलो लिई तिनीहरु आफ्नो गन्तव्यसम्म आइपुगे । भारत अभिमुख नेपालको यस ठाउँबाट उनीहरु उडियानका महापुरुष पद्मसम्भव सम्म पुग्न सफल भए । त्यहाँ पुगेपछि, उनीहरुले पद्मसम्भवलाई राजाका उपहारहरुका साथमा त्यो पत्र दिए । त्यसपछि ती सात मध्यस्तकर्ताहरुलाई गुरुले आफू अगाडि नैं पठाइदिए ।

उडियानका महापुरुष आकाशबाट उडेर माङ्गयुलका मध्य समतलभागमा गए, र तीन चन्द्रमाससम्म त्यही रहे । आफूले रोजेका जुनसुकै अग्लो या होचो ठाउँहरुमा उनले एक एकवटा निधि लुकाए । र राजा ठ्रि सोङ्ग दे छेनले हतार हतार स्काबाका श्रीकुट, कोग्रोका मारघर्षणबज्र र नागध्वजलाई सुन बोकाई तुरुन्तै पठाइदियो । बाटोमा उनीहरु थकाइ लाग्ने गरी कुराकानीहरु गर्दै हिडे । र गुरुका डाकिनी लोकपालहरु आएर उनीहरुलाई आफ्नो इच्छा प्रकट गर भनी सोध्दा ती तीन वाहकहरुले थकाइले चूर भएका हुँदा माङ्गयुलका मध्य फाँटसम्म पुऱ्याइदिनुस् भनी आग्रह गरे ।



उनीहरुलाई गुरुको दर्शन गर्न दिइए र त्यसपछि गुरुले उनीहरु को हुन् भन्ने कुरा थाहा पाइकन पनि सोधे, "तपाईहरु को हुन् ?" "हामीहरु तिव्वती हौं, र गुरुलाई निमन्त्रणा दिन यहा आएका हौं।" उनीहरुले गुरुलाई अभिवादन गरे र एक परिमाण जति सूनको धूलो चढाए। "के यी उपहार हरु मृतक नगरका शासकको तर्फबाट हुन्?" अनि उनले माङ्युल र नेपालका सवभन्दा टाढा सीमासम्म फ्याकिदिए। तर यसले गर्दा पद्मसम्भवले दूतहरुलाई गहिरो चोट पुगेको अनुभव गरे, र भने, "तपाईहरुका लुगाका वाहुला समात्नुस्" र उनले त्यसमा माटो र कंकर भरिदिए। जव एक एक गरी सवैले आफ्ना वाहुलाहरु खोलेर हेरे, सवै सुन चाँदी, मणि र दूर्लभ पत्थरमा परिणत भएको पाए। पूर्ण श्रद्धाले ओतपोत भएका ती दूतहरुले मुनिप्रति ठूलो आदरभाव उत्पन्न गरे।

## पद्मले तिब्वतका यक्षहरुलाई दमन गर्छन्

त्यसपछि गृष्म श्रृतुमा पद्मसम्भव माङ्युलको महलमा आए । शाङ्शुङ प्रान्तका एकक्रोधदेवी उग्रचण्डी जामुन प्रख्यात शत्रु नाम गरेकाले मनमनै गुरुलाई दुई पत्थर पहाड बीच थिचेर मार्न सक्छु भनी सोंचिन् । तर पद्मसम्भव आकाशमा उडेर गए र विवश चण्डीका आफ्नो जीवनको मुटू उनलाई अर्पण गरे । उनको गुह्य नाम हिरामोतीको श्रृण रहन गयो । गुरुले तिनीलाई संरक्षण गर्नको लागि एक महानिधि प्रदान गरे ।

त्यसपछि उनी आकाश पठारमाथि कृष्णमहलमा पुगे । हिमनदीका श्वेत डाकिनीले बज्रले उनलाई क्षति पुऱ्याउनेछु भनी सोंचिन् । तर गुरुले उसलाई एक औंलाको घेरामा पारी तलाउमा बगाइदिए । आतंकित यक्षणी पाल्मो पाल्थाङ्को तलाउसम्म भागिन् । तत्कालै पानी तात्तिन थाल्यो, उसको हड्डीबाट मासु झर्न थाल्यो र गुरुले बज्र फ्याकेर उसलाई कानो बनाइदिए । त्यसपछि उ पानीको सतहमाथि उत्रेर यस्तो विन्ती चढायो: "हे गुरुमुख ! हे बज्र! हे मृत्यु शीरमाला बल ! म प्रतिज्ञा गर्छु कि म कसैलाई अरु हानि पुऱ्याउँदिन । यसरी सोंच्दा म आनन्दित हुन्छु । म अरु के नै गर्न सक्थे र ? म आत्मसमर्पण गर्छु , र गुरुको पात्रको रुपमा आएको छु ।" यसरी उसले पनि आफ्नो जीवनको मुटू उनलाई अर्पण गरे । गुरुले उनलाई एक प्रतिज्ञा दिलाएर उनको देखरेखमा एक महानिधि सुम्पिदिए ।

त्यसपछि उनी ओयुग ब्रेमो भन्ने ठाउँमा आए । त्यहाँ १२ धर्ती देवीहरु हरेकले एउटा एउटा बज्र फ्याकेर उनलाई पहाडहरुबीच थिच्न खोजे । तर बज्र गोलमा बद्ल्यो र तिनीहरुको किच्ने प्रयास विफल रह्यो । अनि उनीहरु शान्त पारिए । १२ कूलदेवीहरु र माथि र तलबाट गरी १२ जनासहित तिनीहरु १२ जनाले आफ्नो जिवनको मुटू उनलाई अर्पण गरे । गुरुले तिनीहरुलाई प्रतिज्ञाको बन्धनमा बाधिदिए र सबैलाई एक एक बटा निधि सुम्पिदिए ।

अनि उनी ओयुगको पंक्षी गुँड भन्ने किलामा गए । सुरक्षात्मक सुबज्र नामक एक महा उपाशक तीनसय साठ्ठी भारदारहरुको जमात लिएर आयो । पद्मले तिनीहरुलाई पनि प्रतिज्ञाबद्ध तुल्याए तिनको रेखदेखमा एउटा निधि छोडेर गए । त्यसपछि, जब उनी श्याम्पोको उपत्यकामा पुगे, त्यहाँ पहाड जत्रो जीउ भएको, मुख र नाकका प्वालहरुबाट प्रचण्ड बायु

तथा हिमवात आंकल्ने श्वेत चौरीगाई देखापरे । गुरुले लोहअंकुश मुद्राले उसको नाकका प्वाल बेस्सरी ताने, पाशमुद्राले उसलाई बाधिदिए, सिक्रीमुद्राले पाशबद्ध पारे र घण्टमुद्राले उसको शरीर र मनमा हिर्काए । जब महाश्वेतगाईले आफ्नो जीवनको प्राण उनलाई अर्पण गऱ्यो, उसलाई प्रतिज्ञाको बन्धनमा बाधिदिए, एक वटा निधि दिए ।

गुरुलाई परीक्षण गर्नको लागि आर्गालि पठारका यक्षले एक श्वेत गोहीको भेषमा उनको मार्ग रोकिदियो। उसको टाउको उड्घुर जिल्लासम्म पुग्यो र पुच्छर खामस्थित सोग नदी र ग्यरमोथाङ्सम्म लम्बियो । गुरुले आफ्नो खट्वाङ्गले त्यो गोहीलाई बीच शरीरमै आरपार हुनेगरि छेडिदिए र भने, "तिमी पांच केश वेष्टनधारी गन्धर्वहरुका राजा नागराज खरीरङ हौ। जा, फर्किहाल र मण्डलाकार आहूति दिन आफैलाई तयार पार। अनि यक्ष अत्यन्तै चिसो हिँम स्थानमा गयो तर त्यहाँ हिउँ नैं पग्लेर गयो र हरियो रङ्गको हिउँ त्यसरी पगिलएको बेला कालो पहाडको शिखर देख्न सकिन्थ्यो। यक्षले अरु सहन सकेन त्यसैले उसले स्वादिष्ट भोजनहरुद्वारा सजिएको एउटा गणचक्रको बन्दोवस्त गरे । र आफैलाई मोति फिरिएको कपाल भएको र सेतो रेशमको पकडी लगाएको बालकको रुपमा परिवर्तन गऱ्यो। अनि उसले गुरुलाई वन्दना गरी प्रदक्षिणा गऱ्यो । आफ्नो जीवनको प्राण उनलाई अर्पण गऱ्यो र प्रतिज्ञामा बाँधिएपछि उसलाई रेखदेख गर्नको लागि भनी एकसय निधिहरु सुम्पिए। उसको गुह्य नाम *महाबलवज्र* भयो।

अनि उत्तरी पठारमाथि अवस्थित फानयुल उपत्यकामा गुरु आइपुगे। ती दुष्ट उत्तरी भेगका मानिसहरु टिङ्ग लो मान अनुहारहरुले उत्तरी भेगका प्रचण्डवात संग्रहित गरेर गुरु र उनका शिष्यमाथि प्रहार गरे। उनीसंगै रहेका व्यक्तिहरुलाई पानी प्यास लाग्यो त्यसैले गुरुले एक चिसो हावा तानेर लिए । त्यसपछि, त्यो वातलाई दिशा नियन्त्रण गरी उनले सूर्यले नौनीलाई पग्लाएजस्तै टिङ्ग लो मानहरुमध्ये एकजनालाई पग्लाइ दिए। अनि उसलाई प्रतिज्ञाको बन्धनमा बाँधे। सवैले आफ्नो प्राणै गएपनि त्यस्तो काम गर्दिन भन्ने बाचा गरेपछि गुरुले एक निधि तिनीहरुको संरक्षणमा सुम्पिदिए ।

त्यसपछि, *स्वर्गीय नीलधूपीवृक्ष*को लाङ ड्रोममा उनले अनुत्तर अर्थमण्डलमा प्रवेश गरे र सिद्धि हाँसिल गरे। सातौं दिनपछिको मध्यरात्रीमा

भय र पीडाको प्रभुत्व रह्यो । र उनले दृष्टि लगाए, त्यसबेला मारगणका नेताहरु झण्डा फहराएर उनलाई आग्रह गरिरहेका थिए । "हे गुरु ! अब हामीहरु भयभीत भइसकेका छौं । हामीलाई क्षमा गर्नुहोस् !" तिनीहरुले आत्मसमर्पण गरे र प्रतिज्ञा गरे । त्यसपछि सुरक्षित राख्नको लागि तिनीहरुलाई एक निधि प्रदान गरे।

त्यसपछि, उनी खामस्थित *एक्खुट्टे कस्तुरी* नामक ठाउँमा आइपुगे । त्यहाँ उनले कानो राक्षसहरु तथा उराङहरु सबैलाई प्रतिज्ञाको बन्धनमा बाँधिदए । त्यसपछि, उनी खाम सिंह नामक पत्थरी गुफामा रोके । *अशुद्ध शिलोत्पन्न* नामक एक बुढो व्यक्तिले आफ्नो शीर गुरुको छातिमा राख्यो, आफ्नो खुट्टा खामस्थित ग्यरमो थाङतर्फ फैलायो र आफ्नो एक हात कैलाशपर्वतको शिखरसम्म उचाल्यो र अर्को हात मानसरोवरसम्म फैलायो । दश खरब अमनुष्यहरु, साच्चैनै कल्पनातीत, त्यतातिर लम्के, र वर्षा वर्से जस्तै हरेक प्रकारका हतिहारहरु प्रक्षेपण गरे । त्यसबेला गुरुले पञ्चबर्गीय क्रुरदेवताहरुका भयंकर रुप धारण गरेर उनीहरुका नेता अशुद्ध शिलोत्पन्न मानव लगायत ती सबै राक्षसहरुलाई बशमा लिए ।

त्यसपछि उनी चुबो र खाराग पर्वतमा पुगे । त्यहाँ उनले सबै मामो तथा सेन्मोहरुलाई प्रतिज्ञाबद्ध तुल्याए । तत्पश्चात उनी छाङस्थित सिल्मामा आए जहाँ उनले सबै मान्मो तथा सबै ल्हास्मनहरुलाई प्रतिज्ञामा बाँधे ।

गेम्पा खोलातिर उनले सबै उपाशकहरुको आत्मसमर्पण स्वीकार गरे । राब्काको मरुभूमिमा उनले सबै आठ प्रकारका यक्षहरुलाई नियन्त्रणमा लिए । रोहाको चित्रित उपत्यकाभित्र उनले महामारी देवीहरुलाई बशमा पारे । रोङ रोङको कालो उपत्यकामा उनले दानवहरुलाई बशीभूत गरे । माल्ग्रोमा नाग जातहरुलाई प्रतिज्ञामा बन्धित पारे । यूको फग्मोमा, फोर्ग्युदहरुलाई प्रतिज्ञाबद्ध तुल्याए । कौडी वर्ण सिन्दुर चट्टानमा, उनले *सुगन्धभक्षी*हरुलाई प्रतिज्ञामा लिए ।

कैलाशपर्वतका हिमशिखरमाथि उनले अठ्ठाइस नक्षत्रहरुलाई बशमा पारे । प्रलुप्तहस्तिका खण्डहरमा उनले अर्को एउटा निधि पनि लुकाए । स्तारगो हिमनदीतिर, उनले अष्ट महाग्रह तथा उपग्रहहरुलाई शान्त पारे र एक्काइस वटा निधिहरु लुकाए । नील हिमनदीतिर, राक्षसहरुले एकै केन्द्र

भएका हवनकुण्ड यज्ञ तयार पारी संसारका सबै खानेकुरा तथा धनसम्पतिहरु त्यस हवनकुण्डमा होमिदिए । यहाँ र स्तारगो हिमनदीमा पनि गुरुले अरु सांकेतिक ग्रन्थहरु लुकाए । लोबोमा ९ डेन्मा दिदी बहिनीहरूलाई प्रतिज्ञामा लिए । पूर्णभद्र यक्षद्वारा आव्हान गरिएकोले उसलाइं पनि प्रतिज्ञाबद्ध पारे । शिखरराक्षस हिमनदीमा आव्हान गरिएको हुंदा उनले त्यस राक्षसलाइं पनि प्रतिज्ञाबद्ध पारे । उनलाई दिव्य पर्वतका राक्षसले आव्हान गरिए र उसलाई पनि प्रतिज्ञाबद्ध पारे र एक निधि सुम्पिदिए ।

यस घडीमा राजाबाट बारम्बार सन्देशहरु आए: "तोड लुङ्ग ग्रम्बु वाटिकामा हाम्रो भेटघाटको समय निश्चित गरिसकेको छ । म जस्तो विजयी र शक्तिशाली राजाले पनि तपाईलाई कैयौं दूतहरु पठाइसके अब म आफै आउन मात्र बाकि छ ।"

अर्को अझै एक शीतकाल र चन्द्रमाससम्म गुरु खलव्रग पर्वतमा बसे । पर्वतशिखरका असभ्य यक्षहरुलाई प्रतिज्ञामा बाँधेर उनीहरुलाई एक निधि प्रदान गरे । त्यसपछि उनी जुलफुगस्थित हिमोइनसको बाटिकामा बास बसे । प्रेत, ग्रह तथा डाम्री भूतहरुलाइ बशमा लिएपछि तिनीहरुलाई सुरक्षितसाथ राख्नको निमित्त एक निधि प्रदान गरे । त्यसपछि उनी पूरा बसन्तऋतु उच्च पत्रेचट्टान पर्वतमा बास गरे , र त्यहाँ जा कन्दराका गोन्पोहरु र सोशाका डाम्रीहरुलाई वशमा लिए ।

## पद्म तिव्वतमा आइपुग्छन् र राजासित उनको जम्काभेट हुन्छ

त्यसपछि पद्मसम्भव ल्हासास्थित तोड् लुंग रम्यबाटिकामा पुग्छन् । ब्रम्हपुत्रनदीको किनारामा बास गरेका राजाले दूतका रुपमा भद्रदेव र नागश्रीलाई पठाए । तिनको साथ पाँच सय लोहकवचधारी घोडचढीहरुलाई पनि पठाए । अब तोड लुङ्ग जोङ्ग पा मियामा राजासित भेट्ने समय निकट भएको थियो । त्यसबेला प्रचण्ड गर्मी थियो र कतै पानी अथवा चिया उपलव्ध थिएन । तर उडियानका महापुरुष पद्मसम्भवले तोड्लुङ्ग कुवामा आफ्नो खट्वाङ्ग राखे । "हे भद्रदेव ! पानी वेगसित निस्कदैछ । भाँडो थाप्नुहोस् ! पद्मले भने । र त्यो स्थलको नाम नै भाडोको दिव्य जल रहन गयो ।



त्यसपछि, ब्रम्हपुत्र नदीको किनारको समीप रहेको हिमहलको वाटिकामा उनले राजालाई नैं भेटे । तिब्वतका राजा आफ्ना नोकर भारदारहरुको साथमा अघि उभिए । कुनै पनि मानिसलाई त्यो स्पन्दित तेज युक्त परेवाका वथान जस्तै लाग्नेछ । र दुइटी रानीहरु उपस्थित भइन् । तिनका वरिपरि सुनको जरी जडित पाल सरी विभिन्न टल टल चम्किने रङ्गका वस्त्रहरु पहिरिएका परिचारिकाहरु थिए । ढोल बजाएर, गीत गाएर मकुण्डो लगाई तालपूर्ण नृत्य गरी पद्मसम्भवको स्वागत गरे ।

उडियानका महापुरुष पद्मसम्भवले मनमनै सोंचे: ' मैले गर्भबाट जन्म लिएको होइन, म त उपपादुक हुँ: राजा गर्भबाट जन्मिए । जन्मको हिसावले म उनीभन्दा अधिक उच्च छु । यस समय उनको अधिराज्यमाथि उडियानको धर्मले आधिपत्य जमाएको छ । कलुषित तिब्वतका राजा आफ्नो पैतृक वंशको हिसावले उच्च छन् । तर हामी अर्थात उनी र म को हौ त आखिर ? उनको मन अन्धकारमा डुबेको छ ; म पन्चविद्याका ज्ञाता हुँ, एकै जन्ममा जन्म र मृत्युवाट छुटकारा पाई बुद्ध बनेको छु । आवश्यकता

परेर उनले मलाई यहाँ आमन्त्रण गरे। यो राजाले मलाई मैले भन्दा पहिले नै अभिवादन गर्न आइसके। म उनको अभिवादन फर्काउं कि नफर्काउं ? फर्काउं भने धर्मको शालिनता उपेक्षित हुनेछ। नफर्काउं भने उनी राजा भएको हुंदा रिसाउने छन्। जे होस् उनी जतिसुकै उच्च र महान भएतापनि म उनलाई अभिवादन गर्न सक्दिन।'

अनि राजा ठ्री सोङ्ग दि छ्वेनले पनि मनमनै विचार गरे: 'म तिव्वतका सवै कृष्णशीरधारी जनताहरुमाथि प्रभुत्व जमाउने शक्तिशाली राजा हुँ। बोधिसत्त्व उपाध्यायले त पहिले नै मलाई अभिवादन गरिसके। गुरुले पनि मलाई अभिवादन गर्नुपर्छ।' तसर्थ पहिलो अभिवादन चढाउन अनिच्छुक भई राजा त्यही अल्मलिएर उभिरहे।

अव गुरुले आफ्नो महानता तथा कुलिनता गीत गाएर सुनाए :
"त्रिकालका बुद्धहरु योनीद्वारबाट उत्पन्न भएका छन्।
उहाहरुसंग तीन असंख्य कल्पहरुसम्म संग्रहित पुण्य र ज्ञान छन्।
तर म पद्म बाट उत्पन्न भएको बुद्ध हुँ।
मेरो उपदेश धर्मका श्रेष्ठ सिद्धान्तबारे हो।
म सित तन्त्रग्रन्थका उपदेशहरु छ।
मे सवै यानहरुलाई स्पष्टरुपले छुट्टयाएर पूर्णरुपले धर्मोपदेश दिन्छु।

" म पद्मसम्भव सद्धर्म हुँ।
मेरो उपदेश धर्ममा सुनिश्चित उन्नतिको लागि हो।
बाह्यरुपले म एक खैरो रङ्गको चीवरधारी भिक्षु हुँ
तर भित्रीरुपले म परमगुह्य मन्त्रका योगी हुँ।

" म पद्मसम्भव स्तूप हुँ।
चित्तको संप्रजन्यता, ग्रन्थको सिद्धान्त र अभ्यासको उपदेश मेरो हो।
देवभुवनहरु भन्दा अधिक उच्च, कर्मरुपी चामल भोजन भन्दा सही मेरो सहजज्ञान हो।

" म पद्मसम्भव गुरु हुँ।

धर्मको हेतु रुप तथ्यांक माप गर्ने र छर्लङ्ग पार्ने उपदेश मेरो हो ।
संसार र निर्वाणको पुस्तकमा म प्रत्यक्ष इन्द्रिय र इन्द्रियातितको व्याख्या गर्छु ।

" म पद्मसम्भव कल्याणमित्र हुँ ।
धर्म अनुसार पाप र पुण्य वर्गीकरण गर्ने उपदेश मेरो हो ।
म पञ्च विद्याका कवचद्वारा सुशोभित छु ।
म पाँचपूर्ण प्राणीका पात्र हुँ ।

" म पद्मसम्भव वैद्य हुँ ।
मनुष्य बुद्ध बन्ने उपदेश मेरो हो ।
मैले प्रतिवेक्षण एवं शान्तिले भरिएको एकान्तवास जान्दछु ।
विना परिश्रम म महामुद्रा र यसका विषयवस्तुहरु प्रतिपादन गर्छु ।

" म पद्मसम्भव श्रेष्ठ ध्यान हुँ ।
विना विश्राम धर्मको चिन्तन गर्ने उपदेश मेरो हो ।
निर्वाणको विजयचक्रमा म देवत्व प्रदान गर्ने ध्यान ग्रहण वा त्याग गर्नमा म अनुपम छु ।

" म पद्मसम्भव मन्त्र धारणीहरुका स्वामी हुँ ।
धर्ममा देवत्व छल्ने उपदेश मेरो हो ।
सेतो र रातो रङ्गका भविष्यसूचन तालिकामा
म कस्तो कस्तो फलहरु हुन्छन् भनी व्याख्यान गर्छु ।

" म पद्मसम्भव गणक हुँ ।
तीन अविभाज्य समयका उपदेश मेरो हो ।
पञ्च विषरुपी व्याधिबाट पिडित प्राणीहरुलाई
म मनोज्ञ धर्म रुपी मल्हम प्रदान गर्छु ।



" म पद्मसम्भव चिकित्सक हुँ ।
मृत्युवाट मुक्त हुने उपचार धर्मामृत मेरो उपदेशमा छ ।
र रुप जस्तोसुकै भएतापनि प्रतिमाहरूलाई देवताहरुको बराबरीमा उकास्छु ।

" म पद्मसम्भव देवताहरुका निर्माता हुँ ।
सार को तहमा विशुद्ध प्रभास्वर ज्ञानको उपदेश मेरो हो ।
चित्तको त्यो चित्र अर्थात समता सम्वन्धमा
म त्यस्तो ग्रन्थ विश्लेषण गर्छु जसमा अर्थ दिनलाई कुनै शव्द नै छैन ।

" म पद्मसम्भव लेखक हुँ ।
अलिखित धर्मको उपदेश मेरो हो ।
चतुर्महाद्वीपमा जन्मेका मानिसहरुलाई

न त्रिकाल ज्ञानद्वारा प्रधानविद्या व्याख्या गर्छु ।

" म पद्मसम्भव ज्योतिषी हुँ ।
साधकहरु सबैलाई विनित गरिदिने मार्गका उपदेश मेरो हो ।
पञ्चविप तथा पञ्च कषायको शत्रुका रुपमा प्रकट भएर
म पञ्चविद्याको आधारमा बाढीको पानी समान बग्छु ।

" म पद्मसम्भव जादुगर हुँ ।
पञ्चविषलाई परिवर्तन गरिदिने उपदेश मेरो हो ।
म सुखलाइ त्याग्न चाहन्न, म सुखलाई पनि मार्गमा लैजान्छु ।
म कुशल धर्मको पञ्चज्ञानमा रमाउँछु ।

" म पद्मसम्भव बोन पो हुँ ।
दुर्भाग्य तथा सौभाग्य प्रदान गर्ने उपदेश मेरो हो ।
म षट्गतिमा सुख प्रदान गर्छु ।
मैले अष्टपरिषदका देवता तथा राक्षसहरुलाई मेरो सेवामा लगाएको छु ।

" म पद्मसम्भव राजा हुँ ।
त्रिधातुमा प्रामाणिकता भएको धर्म उपदेश मेरो हो ।
म गम्भीर कर्म, हेतुप्रत्ययका गम्भीर प्रतीत्यसमुत्पादचक्रलाई आलिङ्गन गरी थर्काउँछु ।
मनलाई नै दमन गरी म हरेक कार्य सिद्ध गर्छु ।

" म पद्मसम्भव मन्त्री हुँ ।
आफ्ना पूर्व कर्म जस्तोसुकै भएपनि धर्ममा प्रवेश गराउने उपदेश मेरो हो ।
म तृष्णाका परमफलप्रति निग्रानी राख्दछु ।
आफ्नो दृष्टि नहटाइकन त्रिरत्नमाथि चिन्तन गर्छु ।

म पद्मसम्भव रानी हुँ ।
मृत्यु समयमा बुद्धको सम्झने उपदेश मेरो हो ।

म महान श्रध्दा भएका व्यक्तिका कार्यहरु रक्षा गर्छु ।
म मानिसहरुको इतरको जन्मलाई पनि सुखी वनाउंछु ।

" म पद्मसम्भव स्वामी हुँ ।
दोष निरिक्षण तथा उच्चारण गर्ने धर्म उपदेश मेरो हो ।
बोधिसत्वको करुणारुपी धारले नास्तिकता एवं विचिकित्सारुपी शत्रुतायुक्त विचिकित्सा तथा अन्धविश्वासलाई मैल हत्या गरिसकेको छु ।

" म पद्मसम्भव नायक हुँ ।
प्रतिरोधी चक्रलाई पैतालामुनि कुल्चने धर्म उपदेश मेरो हो ।
तीनप्रकारकादानरुपि सम्पदालाई सुम्पेर म कृपालु पुत्रहरुलाई धर्ममा प्रतिष्ठापित गर्छु ।

" म पद्मसम्भव बुढो पुरुष हुँ ।
आफ्नो धर्मरुपि औलाले बुढो पुरुषहरुलाई छुने उपदेश मेरो हो ।
म तीन संवरलाई मार्ग निर्देशन गर्छु ।
म दिव्य सुखको मार्गमा यात्रा गर्छु ।

" म पद्मसम्भव बुढी महिला हुँ ।
बुद्धि महिलाहरुतर्फ औल्याउने धर्म उपदेश मेरो हो ।
म तीनप्रकारका क्षान्तिका कवच धारण गर्छु ।
शत्रुरुपी दु:ख र भ्रान्तिलाइ दमन गर्छु ।

" म पद्मसम्भव तरुणी महिला हुँ ।
चतुर्मारलाई अवरुद्ध पार्ने धर्म उपदेश मेरो हो ।
म तीनप्रंकारका वीर्यका अलंकार धारण गर्छु ।
म आफैलाई सवै प्राणीहरुको मित्रको रुपमा अर्पण गर्छु ।

" म पद्मसम्भव वयस्क हुँ ।
संवृति सत्य र परमार्थ सत्य दुवै धर्मको अर्थे उपदेश मेरो हो ।

म त्रिसुखका गढमा आँधी ग्रस्त पार्छु ।
सबै प्रकारका ठाउँहरुमा म खेल्न मन पराउँछु ।

" म पद्मसम्भव बालक हुँ ।
पापको विरोधमा मौनताले स्वीकृत गर्ने धर्म उपदेश मेरो हो ।
म ज्ञानका त्रिचक्षुद्वारा देख्दछु ।
म शून्यताको एकिक ज्ञानरुपि दुध चुस्छु ।

" म पद्मसम्भव सानो बालक हुँ ।
निंद्राबाट जगाउने र धर्मको आनन्द प्रदान गर्ने उपदेश मेरो हो ।
जब त्रिधातुमा अनित्यको बशमा रहेका मानिस मर्छन्,
म त्यो गौरवपूर्ण योग जीवनज्ञानपात्र आव्हान गर्छु ।

" म पद्मसम्भव अमर हुँ ।
धर्मको बज्रआयुका निमित्त प्रयुक्त उपदेश मेरो हो ।
म चतुर्महाभूतमा निर्भर छैन ।
न म मासु र रगतको शरीरभित्रै रहन्छु ।

म पद्मसम्भव अनुत्पन्न हुँ ।
महामुद्राको उपदेश मेरो धर्म हो ।
मेरो बज्र शरीर कहिल्यै क्षीण भएर जाँदैन ।
बोधमा मेरो मन सदाको लागि प्रभास्वर छ ।

" म पद्मसम्भव अजर हुँ ।
दु:खलाई शमन पार्ने धर्म उपदेश मेरो हो ।
आफ्नो बाणजस्तो सीधा शरीर भएको अनुभव गर्ने व्यक्तिले रोगमा आफूलाई समर्पण गर्छ ।
उपस्थिति नै शोभा भएका व्यक्तिले दूर्घटनाद्वारा त्यो शोभा गुमाउँछ ।

" म पद्मसम्भव व्याधि अज्ञात हुँ ।

महामुद्रा धर्मको उपदेश मेरो हो ।

- र तपाइं, असभ्य तिब्बतका राजा, धर्म नभएको देशका राजा
तपाइंको वरिपरी जंगली मानिस र प्रेतहरु छन् ।

दुष्कालका दासहरुमा आश्रित हुनुहुन्छ तपाई ।
न सुख नै तपाईको हो न त असल मिजास नै ।

तपाइंका रानीहरु मनुष्यरुपमा राक्षसीहरु हुन् ।
सुन्दर गुलाफी रङ्गका प्रेतहरु तिनका वरिपरी छन् ।
चन्दन, मोती र सुनले तिनीहरुलाई अलंकृत त गर्छन् ।
तर स्नेह र कान्तिले भने तिनीहरुलाई त्यागेका छन् ।

तपाई राजा हुनुभएकोले तपाईको फोक्सो फुलेको छ ।



ठूलो छ तपाइंको शक्ति, तपाइं कलेजो राम्ररी सन्तुष्ट छ ।
हातमा दण्ड लिएर तपाइं माथि अहंकारीपूर्वक उभिनुहुन्छ ।

तर म, हे महोदय, तपाइंलाई अभिवादन गर्दिन !
तरपनि मेरा संयुक्त प्रणिधानमुताविक
तिव्वतको राजधानीमा आएपछि म यही रहन्छु ।
महाराज, हेर्नुहोस्, म आएको छु ? "

यति भनिसकेपछि, उनले आफ्नो हात घुमाएर तिनीहरुतर्फ फर्काए र उनको औंलाबाट एक चमत्कारीपूर्ण आगोको ज्वाला निस्केर राजाको वस्त्र च्यातिदियो । राजा, मन्त्री, भारदारहरुले उहांको अगाडि टिक्न सकेन । हसिँयाले काटिए सरह तिनीहरुले एकैसाथ उनलाई दण्डवत गरी अभिवादन गरे ।

## पद्मले सूत्र र तन्त्रहरु अनुवाद गर्छन्

साम्येमा पद्मले जमीनलाई परिशुद्ध पारी मन्दिरको लागि जग स्थापना गरे । त्यसपछि उनले वशमा पारिसकेका सबै प्रेत तथा यक्षहरुलाई भेला पारे । मानिसहरु दिनमा काम गर्थे भने अमनुष्यहरु रातमा काम गर्थे । गुरु चांही राजाको ढुकुटीका सम्पति फेरी फर्काइदिन प्रयत्नरत रहे । तीन रातसम्म पद्मसम्भव गम्भीर ध्यानमा तल्लीन रहे र नागहरुलाई तिव्वतका राजासंग मिलेर वस्न आग्रह गरे । त्यसपछि एक वृहत नाग सरोवरबाट उत्पन्न भयो । उसले पानीलाई हल्लाएर किनाराहरुमा सूनका छालहरुको आधीवेरी ल्याइदियो ।

जव मन्दिर बन्ने काम सिद्धियो, पद्मले एक हजार आठ शरीरहरु एकैसाथ उत्पन्न गरिदिए र मन्दिरका एकसय आठ कोठाहरुभरी फूलहरु छरिदिए । एकैचोटी सबै पवित्र प्रतिमाहरु जीवित भए र धर्मोपदेश दिंदै मन्दिर वरिपरि विचरण गरे । आकाश स्वस्फूर्त संगीतद्वारा व्याप्त भयो, चारैदिशातिर रहेका क्रोधी लोकपाल देवताहरुका शीरबाट आगोका लप्काहरु निस्के र बादलै नभएको आकाशबाट पनि आरोग्यकर अमृतको वर्षा भयो ।

तर धातुहरुलाई नियन्त्रण गर्न सक्ने गुरु फर्कलान् भन्ने डरले

राजा ठि सोङ् दे छेनले गुरुलाई सम्बोधन गर्दै भने, "वर्षौंसम्म मेरा बाजे र आमाबाबुले हिमालयहरुमा एकसय आठ मन्दिरहरु बनाए । ती मध्ये कतिपय ठाउँ त यति दूर्गम र विकट छन् कि अधिकांश मन्दिरहरु अब जीर्ण अवस्थामा पुगिसकेका छन् । यता उता व्यापकरुपले छरिएर प्रचार भएका उपदेशहरु एक ठाउँमा संग्रहित भएर कहिल्यै रहेनन् । यदि तपाई यहा हुनुभएको बेला नैं, सूत्र र तन्त्रका पवित्र ग्रन्थहरु तिब्बतमा ल्याउन सकिएन र तिनलाई पूर्णरुपले अनुवाद गर्न सकिएन भने मैले यहाँ स्तूपहरु निर्माणगरेपनि, भाष्यहरु लेखेपनि र मन्दिरहरु निर्माण गरेपनि त्यसको केही लाभ हुन्न ।"

तसर्थ राजाले भारतका प्रख्यात गुरुहरुबाट संस्कृत सिकेर धर्मका पवित्र ग्रन्थहरु साथमा लिएर फर्कनको लागि एक जमात तिब्बती अनुवादकहरुलाई भारतमा पठाए । र बुढो भइसकेतापनि शान्तरक्षित हिनयान र महायानको सूत्र र दार्शनिक भाष्यहरु प्रतिष्ठापन गर्न र पहिलो तिब्बती भिक्षुहरु तालिम प्रदान गर्नको लागि तिब्बतमै रहे । त्यसपछि उपयुक्त समयमा लोचावा र पण्डितहरु उचाइमा रहेको साम्ये गुम्बाको



मध्य सभा कक्षमा भेला भए । जन्मको दागबाट मुक्त भई कमलपुष्पबाट उत्पन्न भएका, र सबै सूत्र र तन्त्रहरुका अर्थहरुको पूर्णरुपले ज्ञाता, तिब्बतमा आमन्त्रण गरिएको कारणले तिब्बतमा आई सारा भूमिलाई नै परिवर्तन गरेका गुरु पद्म सम्भव मन्दिरको मध्यभागमा रहेको स्वर्ण आसनमा पलेटि कसेर बसिरहेका थिए ।

उनको साथमा काश्मिरबाट आएका तान्त्रिक विद्वान तथा गुरुहरु, त्रिपिटक र बाह्य एवं भित्री मन्त्र पूर्णरुपले बुझेका विमलमित्र उपस्थित थिए । अनि त्यसपछि, ८०० विद्वानहरुको सम्पूर्ण भेलाले अलिकति पनि नछुटाइकन संस्कृत, पालि, गिल्गिट र चिनिया भाषामा लेखिएका बौद्ध ग्रन्थ तथा पुस्तकहरुलाई तिब्बती भाषामा अनुवाद गर्ने ऐतिहासिक कामको थालनी गरे । एक्काइस भाषाहरुका ज्ञाता प्रकाण्ड लोचावा बैरोचनको साथमा पद्मसम्भवले सामान्य तथा गुह्य तन्त्रहरु अनुवाद गरे र बज्रयानका विशेष मंन्त्र उपदेशहरु अनावरण गरे । भनिन्छ कि, तिब्बतमा त्यस बखत फस्टाएको धार्मिक ज्ञानका चर्याको शिखरसम्म भारत पनि पुग्न सक्दैनथ्यो ।

## पद्मले आफ्ना निकटत्तम शिष्यहरुलाई अभिषेक दिन्छन् र तिब्बतबाट प्रस्थान गर्छन्

अनेक शिष्यहरु ग्रन्थहरुको ज्ञान र अभ्यासमा परिपक्व भए र तिनीहरुले दूर्लभ गुरुको खोजी गरे । पद्मसंभव त्यसबेला साम्ये गुम्बा माथि चिम पु नजिकै अवस्थित माथिल्लो डाडाको एकान्तमा साधनाको अभ्यास गरिरहेका थिए । राजा ठ्रि सोङ्ग दे छेन, येशे छोग्याल, अनुवादक बैरोचन र अरु हरेकले गुरुलाई कमलपुष्पको आकृतिमा दश औंस सुनका टुक्राहरु चढाए र सर्वबुद्धसमागम मण्डलको अभिषेकको लागि विनम्र अनुरोध गरे । पूजा समारोहमा सबै शिष्यहरुले फूलहरु मण्डलमा फ्याके र अत: भित्री मण्डलका द्वारपाल क्रोधी देवताहरु (हेरुक) लाई आव्हान गरे । आफ्ना चित्त, वेदना र संज्ञालाई पूर्णरुपले र सक्रियरुपले गुरु रिम्पोछेमा लगाई शिष्यहरुले गुरुका धेरै निर्माणकायहरुमध्ये एकमा आफ्नो विज्ञानलाई समाहित गरे ।

त्यसपछि, पद्मसंभवले पच्चीस जना निकटत्तम शिष्यहरुलाई सारयुक्त मौखिक दिक्षा र संसारबाट पूर्ण मुक्ति प्रदान गर्ने समयहरु अनावरण गरे । मनको एकाग्र समाधि प्राप्त गर्नुभन्दा पहिले उनीहरुले

